# बीउ बिजन ऐन, २०४५

लालमोहर र प्रकाशन मिति
२०४५।७।१०

| संशोधन गर्ने ऐन | प्रमाणीकरण र प्रकाशन मिति |
|---|---|
| १. बीउ बिजन (पहिलो संशोधन) ऐन, २०६४ | २०६४।१०।१० |
| २. गणतन्त्र सुदृढीकरण तथा केही नेपाल कानून संशोधन गर्ने ऐन, २०६६☺ | २०६६।१०।७ |

## २०४५ सालको ऐन नं. १५

## बीउ बिजन सम्बन्धी व्यवस्था गर्न बनेको ऐन

**प्रस्तावना** : विभिन्न बालीको उत्पादनमा बृद्धि गराउन उच्च गुणस्तरको बीउ बिजन उत्पादन, प्रशोधन तथा परीक्षण गरी गुणस्तरयुक्त बीउ बिजन सुव्यवस्थित रूपले उपलब्ध गराई सर्वसाधारण जनताको सुविधा तथा आर्थिक हित कायम राख्न वाञ्छनीय भएकोले,

श्री ५ महाराजाधिराज वीरेन्द्र वीर विक्रम शाददेवबाट राष्ट्रिय पञ्चायतको सल्लाह र सम्मतिले यो ऐन बनाइबक्सेको छ ।

**१. संक्षिप्त नाम र प्रारम्भ :**

१.१ यस ऐनको नाम "बीउ बिजन ऐन, २०४५" रहेको छ ।

१.२ यो ऐन नेपाल सरकारले नेपाल राजपत्रमा सूचना प्रकाशित गरी तोकिदिएको क्षेत्रमा तोकिदिएको मितिदेखि प्रारम्भ हुनेछ ।✎

**२. परिभाषा :**

२.१ विषय वा प्रसंगले अर्को अर्थ नलागेमा यस ऐनमा-

२.१.१ "बीउ बिजन" भन्नाले भ्रौण विरूवा (इम्ब्रोयनिक प्लान्ट) खाद्य पदार्थ र सुरक्षात्मक आवरण भएको परिपक्व ओभ्यूल (म्याचोर्ड ओभ्यूल) वा यौनिक वा वानस्पतिक तरीकाले पुनरोत्पादन (रिप्रोडक्सन) गरी बाली उत्पादन गर्नका लागि छर्ने वा रोप्ने काममा प्रयोग गर्न सकिने बीउ बिजन वा बीज सम्झनु पर्छ ।

---

☺ यो ऐन २०६५ साल जेठ १५ गतेबाट लागू भएको ।

✎ मिति २०४६।४।३० को नेपाल राजपत्रमा प्रकाशित सूचना बमोजिम काठमाडौं, भक्तपुर र ललितपुर जिल्लाहरूमा २०४६ साल भाद्र १ गते देखि ऐन प्रारम्भ हुने गरी तोकिएको ।

२.१.२ “बाली” भन्नाले फलफूल, खाद्यान्न, तरकारी, नगदेबाली तथा घाँसबाली जस्ता बाली सम्झनु पर्छ ।

२.१.३ “कृषि कार्य” भन्नाले खाद्यान्न, फलफूल, दलहन, तेलहन, तरकारी, नगदेवाली तथा घाँस उत्पादन गर्ने कार्य सम्झनु पर्छ ।

२.१.४ “समिति” भन्नाले दफा ३ बमोजिम गठित राष्ट्रिय बीउ बिजन समिति सम्झनु पर्छ ।

⌘२.१.५ “प्रयोगशाला” भन्नाले दफा ९ बमोजिम स्थापना भएको बीउ बिजन परीक्षण प्रयोगशाला सम्झनु पर्छ ।

२.१.६ “सूचित बीउ बिजन” भन्नाले दफा ११ बमोजिम तोकिएको बीउ बिजन सम्झनु पर्छ ।

२.१.७ “भाडो (कन्टेनर)” भन्नाले वाकस, टिनको बट्टा, शीशी, थैली, बोरा, भकारी, व्यारेल वा अन्य यस्तै बीउ बिजन राख्न प्रयोग गरिने भाँडो सम्झनु पर्छ ।

२.१.८ “प्रजनक (ब्रीडर)” भन्नाले बालीको कुनै जातलाई पहिलो पटक ⌘प्रजनन वा छनौट गरी प्रयोगमा ल्याउने व्यक्ति, संस्था वा निकाय सम्झनु पर्छ ।

⌘२.१.९ “किसिम” भन्नाले एकै नामद्वारा चिनिएका वा चिनिन सक्ने कुनै वनस्पतिको सबै जातमूल (स्पेसिज्) तथा उपजातमूल (सब्स्पेसिज्) सम्झनु पर्छ ।

⌘२.१.१० “जात (भेराईटी)” भन्नाले वनस्पति शास्त्रीय वर्गीकरणमा सबैभन्दा तल्लो श्रेणीभित्र पर्ने समान आनुवंशिक लक्षणहरू देखिने, अन्य समूहसँग कम्तीमा एउटा लक्षणद्वारा भिन्नता छुट्टिने र पुनरूत्पादन (प्रोपागेसन) हुँदा लक्षणहरू परिवर्तन नहुने लक्षण भएका कुनै वनस्पतिको समूह सम्झनु पर्छ ।

२.१.११ “सङ्केतपत्र” भन्नाले भाँडोमा देखिने गरी राखिएको बीउ बिजन सम्बन्धी विवरण ✚(लेबल) सम्झनु पर्छ ।

२.१.१२ “तोकिएको” वा तोकिए बमोजिम” भन्नाले यस ऐन अन्तर्गत बनेको नियममा तोकिएको वा तोकिए बमोजिम सम्झनु पर्छ ।

---

⌘ बीउ बिजन (पहिलो संशोधन) ऐन, २०६४ द्वारा संशोधित ।

✚ बीउ बिजन (पहिलो संशोधन) ऐन, २०६४ द्वारा थप ।

३. **राष्ट्रिय बीउ बिजन समितिको गठन** :

३.१ बीउ बिजन सम्बन्धी नीति निर्धारण गरी कार्यान्वयन गर्न र बीउ बिजन सम्बन्धी विषयमा नेपाल सरकारलाई आवश्यक परामर्श दिन एक राष्ट्रिय बीउ बिजन समितिको गठन हुनेछ ।

⌘३.२ समितिमा देहायका अध्यक्ष तथा सदस्य रहनेछन् :-

३.२.१ सचिव, कृषि तथा सहकारी न्त्रालय - अध्यक्ष

३.२.२ महानिर्देशक, कृषि विभाग - सदस्य

३.२.३ कार्यकारी निर्देशक, नेपाल कृषि अनुसन्धान परिषद् - सदस्य

३.२.४ प्रबन्ध सञ्चालक, कृषि सामग्री कम्पनी लिमिटेड

३.२.५ महाप्रबन्धक, कृषि विकास बैङ्क - सदस्य

३.२.६ प्रबन्ध सञ्चालक, राष्ट्रिय बीउ बिजन कम्पनी लिमिटेड - सदस्य

३.२.७ नेपाल सरकारद्वारा मनोनीत तरकारी, खाद्यान्न, घाँसेबाली विज्ञानसँग सम्बन्धित वैज्ञानिकमध्ये महिला सहित तीनजना - सदस्य

३.२.८ बीज विशेषज्ञ (कम्तीमा सहप्रध्यापक), कृषि तथा पशु विज्ञान अध्ययन संस्थान, त्रिभुवन विश्वविद्यालय - सदस्य

३.२.९ नेपाल सरकारद्वारा मनोनीत बीउ बिजन उद्यमीहरूमध्येबाट एकजना महिला सहित दुईजना - सदस्य

३.२.१० नेपाल सरकारद्वारा मनोनीत बीउ बिजन उत्पादक र कृषकमध्ये कम्तीमा एकजना महिला सहित दुईजना - सदस्य

३.२.११ प्रमुख, बीउ बिजन गुणस्तर नियन्त्रण केन्द्र - सदस्य-सचिव

⌘३.३ उपदफा ३.२.७, ३.२.९ र ३.२.१० बमोजिम मनोनीत सदस्यको पदावधि दुई वर्षको हुनेछ ।

⌘ बीउ बिजन (पहिलो संशोधन) ऐन, २०६४ द्वारा संशोधित ।

३.४ उपदफा ३.३ मा जुनसुकै कुरा लेखिएको भए तापनि उपदफा ⌘३.२.७, ३.२.९ र ३.२.१० बमोजिम मनोनीत सदस्यलाई निजको पदावधि पूरा नहुँदै नेपाल सरकारले हटाउन सक्नेछ ।

३.५ नेपाल सरकारले आवश्यक देखेमा नेपाल राजपत्रमा सूचना प्रकाशित गरी समितिका सदस्यहरूमा आवश्यक थपघट वा हेरफेर गर्न सक्नेछ ।

३.६ समितिले आवश्यक देखेमा कुनै स्वदेशी वा विदेशी विशेषज्ञ वा सल्लाहकारलाई समितिको बैठकमा पर्यवेक्षकको रूपमा भाग लिन आमन्त्रण गर्न सक्नेछ ।

४. **समितिको बैठक र निर्णय** :

४.१ समितिको बैठक अध्यक्षले तोकेको मिति, समय र स्थानमा बस्नेछ ।

४.२ समितिको कूल सदस्य संख्याको पचास प्रतिशत सदस्यहरू उपस्थित भएमा बैठकको लागि गणपूरक संख्या पुगेको मानिनेछ ।

४.३ समितिको बैठकको अध्यक्षता अध्यक्षले गर्नेछ र निजको अनुपस्थितिमा बैठकमा उपस्थित सदस्यहरूले आफूमध्येबाट छानेको सदस्यले बैठकको अध्यक्षता गर्नेछ ।

४.४ समितिको बैठकमा बहुमतको राय मान्य हुनेछ र मत बराबर भएमा अध्यक्षले निर्णयात्मक मत दिनेछ ।

४.५ समितिको निर्णय सदस्य-सचिवद्वारा प्रमाणित गरिनेछ ।

४.६ समितिको बैठक सम्बन्धी अन्य कार्यविधि समिति आफैंले निर्धारण गरे बमोजिम हुनेछ ।

५. **समितिको काम, कर्तव्य र अधिकार :**

५.१ बीउ बिजन सम्बन्धी राष्ट्रिय नीति तर्जुमा गर्न नेपाल सरकारलाई परामर्श दिने ।

५.२ बीउ बिजन उत्पादन तथा वितरण कार्यमा निजी तथा सरकारी क्षेत्रबीच समन्वय कायम गर्ने ।

५.३ बीउ बिजन उद्योगमा लगानी गर्न निजी क्षेत्रलाई प्रोत्साहन गर्ने ।

⌘५.४ नेपालभित्र उत्पादन वा बाहिरबाट आयात भई बिक्री वितरण हुने बीउ बिजनको गुणस्तर नियमित तथा नियन्त्रण गर्ने गराउने ।

५.५ नयाँ जातको बीउ बिजनहरू तोकिएबमोजिम अनुमोदन, उन्मोचन (रिलीज) र दर्ता गर्ने ।

⌘ बीउ बिजन (पहिलो संशोधन) ऐन, २०६४ द्वारा संशोधित ।

५.६ नयाँ जातको बीउ बिजनको विशिष्टता, एकरूपता र स्थायित्व परीक्षण गरी तोकिएबमोजिम प्रजनकलाई स्वामित्वको अधिकार प्रदान गर्ने ।

५.७ बीउ बिजनको गुणस्तर निर्धारण गर्ने ।

५.८ स्वदेशी वा विदेशी निकायहरूद्वारा निर्धारित बीउ बिजनको गुणस्तरलाई आवश्यकता अनुसार अनुमोदन गर्ने ।

✚५.८क बीउ बिजन सम्बन्धी सेवा शुल्कको सम्बन्धमा नेपाल सरकारलाई परामर्श दिने,

✚५.८ख बालीको किसिम र जात सूचित गर्ने सम्बन्धमा नेपाल सरकारलाई सिफारिस गर्ने,

✚५.८ग कसैले अनुमतिपत्र नवीकरण नगराई प्रयोगशाला सञ्चालन गरेको पाइएमा सोको अनुमतिपत्र खारेज गर्ने,

✚५.८घ बाली निरीक्षक, बीउ बिजन नमूना सङ्कलक तथा बीउ बिजन विश्लेषकको रूपमा काम गर्न अनुमति दिनको लागि परीक्षा लिने ।

५.९ बीउ बिजनसम्बन्धी अन्य आवश्यक काम कारवाही गर्ने ।

६. **उपसमितिहरू गठन गर्न सक्ने** :

६.१ बीउ बिजनको उत्पादन, प्रशोधन तथा बिक्री वितरण गर्ने कार्यलाई सुचारू रूपले संचालन गरी गुणस्तरयुक्त बीउ बिजन उपलब्ध गराउने प्रयोजनको लागि समितिले आवश्यकता अनुसार विभिन्न उपसमितिहरू गठन गर्न सक्नेछ ।

६.२ उप-समितिहरूको काम, कर्तव्य र अधिकार तथा बैठक सम्बन्धी कार्यविधि तोकिए बमोजिम हुनेछ ।

⌘७. **बीउ बिजन गुणस्तर नियन्त्रण केन्द्रको स्थापना** : बीउ बिजनको गुणस्तर नियन्त्रण सम्बन्धी कार्य गर्न तथा समितिको सचिवालयको रूपमा काम गर्न नेपाल सरकारले नेपाल राजपत्रमा सूचना प्रकाशन गरी बीउ बिजन गुणस्तर नियन्त्रण केन्द्रको स्थापना गर्न सक्नेछ ।

८. ⌘**बीउ बिजन गुणस्तर नियन्त्रण केन्द्रको काम, कर्तव्य र अधिकार** :

८.१ ⌘बीउ बिजन गुणस्तर नियन्त्रण केन्द्रको काम, कर्तव्य र अधिकार देहाय बमोजिम हुनेछ :-

---

✚ बीउ बिजन (पहिलो संशोधन) ऐन, २०६४ द्वारा थप ।

⌘ बीउ बिजन (पहिलो संशोधन) ऐन, २०६४ द्वारा संशोधित ।

८.१.१ बीउ बिजन ✚गुणस्तर नियन्त्रण तथा प्रमाणीकरण सम्बन्धी आवश्यक पूर्वाधारहरू तयार गरी समितिमा पेश गर्ने ।

८.१.२ समितिद्वारा स्वीकृत तरीका, स्तर तथा मापदण्ड अनुसार बीउ बिजन प्रमाणित गरी आवश्यकता अनुसार प्रमाणपत्र दिने ।

✚८.१.३ उपदफा ९.४ बमोजिम अनुमतिपत्रप्राप्त व्यक्ति वा संस्थाले शर्त बमोजिम काम गरे नगरेको अनुगमन गर्ने ।

८.२ ⌘बीउ बिजन गुणस्तर नियन्त्रण केन्द्रको अन्य काम, कर्तव्य र अधिकार तथा त्यस्तो ⌘केन्द्रले बीउ बिजन गुणस्तर नियन्त्रण तथा प्रमाणीकरण गर्दा अपनाउनु पर्ने कार्यविधि तोकिए बमोजिम हुनेछ ।

**९. ✂...... बीउ बिजन परीक्षण प्रयोगशालाको स्थापना** :

९.१ बीउ बिजनको परीक्षण र तत्सम्बन्धी अन्य कार्य गर्नको लागि नेपाल सरकारले नेपाल राजपत्रमा सूचना प्रकाशित गरी एउटा केन्द्रीय बीउ बिजन परीक्षण प्रयोगशालाको स्थापना गर्न सक्नेछ ।

९.२ उपदफा ९. १ बमोजिम स्थापना भएको प्रयोगशालाको रेखदेख र नियन्त्रणमा रहने गरी आवश्यकता अनुसार ⌘नेपालका विभिन्न ठाउँमा बीउ बिजन परीक्षण प्रयोगशाला स्थापना हुन सक्नेछ ।

⌘ ९.३ कुनै व्यक्ति वा संस्थाले निजी क्षेत्रमा प्रयोगशाला स्थापना र सञ्चालन गर्न चाहेमा अनुमतिका लागि तोकिए बमोजिमको दस्तुर सहित तोकिए बमोजिमको ढा"चामा समिति समक्ष निवेदन दिनु पर्नेछ ।

✚९.४ उपदफा ९.३ बमोजिम प्राप्त निवेदनउपर छानबिन गरी उपयुक्त देखेमा तोकिए बमोजिमका शर्तको अधीनमा रही समितिले प्रयोगशाला स्थापना र सञ्चालन गर्न अनुमतिपत्र दिनेछ ।

---

✚ बीउ बिजन (पहिलो संशोधन) ऐन, २०६४ द्वारा थप ।
⌘ बीउ बिजन (पहिलो संशोधन) ऐन, २०६४ द्वारा संशोधित ।

✂ बीउ बिजन (पहिलो संशोधन) ऐन, २०६४ द्वारा झिकिएको ।

+९.५ यस दफामा अन्यत्र जुनसुकै कुरा लेखिएको भए तापनि यो ऐन प्रारम्भ हुनु अघि स्थापना भएका निजी क्षेत्रका प्रयोगशालाले यो ऐन प्रारम्भ भएको मितिले एक वर्षभित्र यस ऐन बमोजिम अनुमतिपत्र लिइसक्नु पर्नेछ ।

१०. **प्रयोगशालाको काम, कर्तव्य र अधिकार** : प्रयोगशालाको काम, कर्तव्य र अधिकार तोकिए बमोजिम हुनेछ ।

+१०क. **नवीकरण** :

१०क.१ यस ऐन बमोजिम स्थापना भएका प्रयोगशालाको अनुमतिपत्र प्रत्येक वर्ष नवीकरण गराउनु पर्नेछ ।

१०क.२ यस ऐन बमोजिम स्थापना भएका प्रयोगशालाले उपदफा १०क.१ मा तोकिएको अवधिभित्र अनुमतिपत्र नवीकरण नगराएमा त्यस्तो अनुमतिपत्र स्वतः रद्द हुनेछ र समितिले त्यस्तो प्रयोगशाला बन्द गराउन सक्नेछ ।

११. **बीउ बिजनको किसिम वा जात सूचित गर्ने अधिकार** : नेपाल सरकारले कृषि कार्यको निमित्त प्रयोग गरिने बीउ बिजनको कुनै किसिम वा जातको गुणस्तर नियमित तथा नियन्त्रण गर्न आवश्यक देखेमा समितिको परामर्श लिई नेपाल राजपत्रमा सूचना प्रकाशित गरी त्यस्तो किमिस वा जातको बीउ बिजनहरू सूचित बीउ बिजन भनी तोक्न सक्नेछ र त्यसरी तोक्दा विभिन्न क्षेत्रको लागि उपयुक्त हुने बीउ बिजनको किसिम वा जात समेत तोक्न सक्नेछ ।

+११क. **अनुमतिपत्र लिनु पर्ने** :

११क.१ कुनै व्यक्ति वा संस्थाले बीउ बिजनको बिक्री वितरण सम्बन्धी कारोबार गर्न चाहेमा तोकिए बमोजिमको दस्तुर सहित तोकिएको अधिकारी समक्ष निवेदन दिई तोकिए बमोजिमको ढाँचामा अनुमतिपत्र लिनु पर्नेछ ।

११क.२ कसैले उपदफा ११क.१ बमोजिम अनुमति नलिई बीउ बिजन बिक्री वितरण गरेको पाइएमा त्यस्तो बीउ बिजन बाली निरीक्षकले जफत गर्नेछ ।



---

+ बीउ बिजन (पहिलो संशोधन) ऐन, २०६४ द्वारा थप ।

✚११ख. **<u>सूचित नभएका बीउ बिजन बिक्री वितरण गर्न नपाइने</u>** :

११ख.१ कृषि अनुसन्धान प्रयोजनको लागि बाहेक कसैले पनि यस ऐन बमोजिम सूचित नभएका बीउ बिजन बिक्री वितरण गर्न पाइने छैन ।

११ख.२ कसैले उपदफा ११ख.१ बमोजिम सूचित नभएका बीउ बिजन बिक्री वितरण गरेको पाइएमा त्यस्तो बीउ बिजन बाली निरीक्षकले जफत गर्नेछ ।

⌘१२. <u>बीउ बिजनको न्यूनतम गुणस्तरको हद तोक्न सक्ने</u> : नेपाल सरकारले नेपाल राजपत्रमा सूचना प्रकाशन गरी सूचित बीउ बिजनमध्ये समितिको परामर्श लिई कुनै बीउ बिजनको हकमा न्यूनतम गुणस्तरको हद तोक्न सक्नेछ ।

⌘१३. <u>सूचित बीउ बिजनको बिक्री वितरण</u> :

१३.१ सूचित बीउ बिजनको बिक्री वितरण गर्ने व्यक्ति वा संस्थाले आफूले बिक्री वितरण गर्ने बीउको भाँडोमा देहायको विवरण उल्लेख गर्नु पर्नेछ :-

१३.१.१ बीउ बिजनको किसिम र जात,

१३.१.२ दफा १२ बमोजिम तोकिएको न्यूनतम गुणस्तरको हद,

१३.१.३ रासायनिक पदार्थ प्रयोग गरी उपचार गरिएको भए सोको विवरण,

१३.१.४ तोकिए बमोजिमका अन्य कुराहरू ।

१३.२ उपदफा १३.१ मा जुनसुकै कुरा लेखिएको भए तापनि कुनै खास क्षेत्रको लागि मात्र उपयुक्त हुने भनी प्रजनकले निर्धारण गरेको किसिम र जातको सूचित बीउ बिजन त्यसरी निर्धारण गरिएको क्षेत्र बाहेक अन्य क्षेत्रमा बिक्री वितरण गर्न वा गराउन पाइने छैन ।

**१४.** ×..................

**१५. <u>सूचित बीउ बिजन निकासी वा पैठारी गर्न स्वीकृति लिनु पर्ने</u>** :

१५.१ कुनै किसिम वा जातको सूचित बीउ बिजन निकासी वा पैठारी गर्न चाहने व्यक्तिले तोकिएको अधिकारी समक्ष तोकिए बमोजिमको ✚<u>दस्तुर र</u> विवरण सहित निकासी वा पैठारी गर्न स्वीकृतिको निमित्त निवेदन दिनु पर्नेछ ।

१५.२ उपदफा १५.१ बमोजिमको निवेदन प्राप्त भएपछि तोकिएको अधिकारीले स्वीकृति दिन सक्नेछ ।

---

✚ बीउ बिजन (पहिलो संशोधन) ऐन, २०६४ द्वारा थप ।

⌘ बीउ बिजन (पहिलो संशोधन) ऐन, २०६४ द्वारा संशोधित ।

× बीउ बिजन (पहिलो संशोधन) ऐन, २०६४ द्वारा खारेज ।

१५.३ उपदफा १५.१ मा जुनसुकै कुरा लेखिएको भएतापनि बीउ बिजन निकासी वा पैठारी गर्ने उद्देश्यले स्थापित उद्योगले निकासी वा पैठारी गर्न चाहेको सूचित बीउ बिजनको तोकिए बमोजिमको विवरण तोकिएको अधिकारीलाई दिई निकासी वा पैठारी गर्न सक्नेछ ।

✚१५क. **निकासी वा पैठारीमा रोक लगाउन सक्ने** : नेपाल सरकारले नेपाल राजपत्रमा सूचना प्रकाशन गरी नेपालको कृषि कार्यलाई हानि वा प्रतिकूल प्रभाव पुऱ्याउने कुनै खास जातको बीउ बिजनको पैठारी गर्न वा कुनै खास कारणले निकासी गर्न नहुने कुनै सूचित जातको बीउ बिजन निकासी गर्न जोखिम विश्लेषणको आधारमा रोक लगाउन सक्नेछ ।

⌘१६. **बाली निरीक्षक, बीउ बिजन नमुना सङ्कलक तथा बीउ बिजन विश्लेषक सम्बन्धी व्यवस्था** :

१६.१ नेपाल सरकारले आवश्यकता अनुसार तोकिएको योग्यता पुगेका बाली निरीक्षक, बीउ बिजन नमुना सङ्कलक तथा बीउ बिजन विश्लेषक नियुक्त गर्न सक्नेछ ।

१६.२ उपदफा १६.१ बमोजिम बाली निरीक्षक, बीउ बिजन नमुना सङ्कलक तथा बीउ बिजन विश्लेषक नियुक्त नभएसम्मको लागि नेपाल सरकारले सो सम्बन्धमा योग्यता पुगेका कुनै निजामती कर्मचारीलाई बाली निरीक्षक, बीउ बिजन नमुना सङ्कलक वा बीउ बिजन विश्लेषकको रूपमा काम गर्न तोक्न सक्नेछ ।

१६.३ उपदफा १६.१ र १६.२ मा उल्लिखित अवस्थामा बाहेक कसैले पनि यस ऐन बमोजिम अनुमतिपत्र नलिई बाली निरीक्षण गर्न, बीउ बिजनको नमूना सङ्कलन गर्न तथा बीउ बिजन विश्लेषण गर्न हुँदैन ।

१६.४ उपदफा १६.३ बमोजिमको अनुमतिपत्र लिन चाहने तोकिए बमोजिमको योग्यता पुगेको व्यक्तिले समितिबाट लिइने परीक्षा उत्तीर्ण गर्नु पर्नेछ ।

१६.५ उपदफा १६.४ बमोजिमको परीक्षा उत्तीर्ण भएको व्यक्तिले बाली निरीक्षक, बीउ बिजन नमुना सङ्कलक वा बीउ बिजन विश्लेषकको रूपमा व्यवसाय सञ्चालन गर्ने अनुमतिपत्र प्राप्त गर्न समिति समक्ष तोकिएको दस्तुर सहित तोकिएको ढाँचामा निवेदन दिनु पर्नेछ ।

१६.६ उपदफा १६.५ बमोजिम निवेदन पर्न आएमा तोकिए बमोजिमको दस्तुर लिई तोकिएको शर्त र ढाँचामा समितिले अनुमतिपत्र दिनेछ । यसरी दिइएको अनुमतिपत्र दुई वर्षसम्म बहाल रहनेछ ।

१६.७ उपदफा १६.६ बमोजिम दिइएको अनुमतिपत्र तोकिए बमोजिम नवीकरण गराउनु पर्नेछ ।

✚ बीउ बिजन (पहिलो संशोधन) ऐन, २०६४ द्वारा थप ।

⌘ बीउ बिजन (पहिलो संशोधन) ऐन, २०६४ द्वारा संशोधित ।

१६.८ उपदफा १६.७ बमोजिम अनुमतिपत्र नवीकरण नगराएमा त्यस्तो अनुमतिपत्र स्वतः रद्द हुनेछ ।

१६.९ उपदफा १६.४ बमोजिमको परीक्षा सम्बन्धी अन्य व्यवस्था तोकिए बमोजिम हुनेछ ।

⌘१७ **बाली निरीक्षक, बीउ बिजन नमुना सङ्कलक तथा बीउ बिजन विश्लेषकको काम, कर्तव्य र अधिकार** : बाली निरीक्षक, बीउ बिजन नमूना सङ्कलक तथा बीउ बिजन विश्लेषकको काम, कर्तव्य र अधिकार तोकिए बमोजिम हुनेछ ।

✚१७क. **सेवा शुल्क लिन सक्ने** :

१७क.१ नेपाल सरकारले यस ऐन बमोजिम उपलब्ध गराउने कुनै सेवा बापत नेपाल राजपत्रमा सूचना प्रकाशन गरी तोकेको सेवा शुल्क लिन सक्नेछ ।

१७क.२ कुनै व्यक्ति वा संस्थाले यस ऐन बमोजिम कुनै सेवा प्रदान गर्दा समितिबाट स्वीकृत गरे बमोजिमको सेवा शुल्क लिन सक्नेछ ।

१८. **नेपाल सरकारले मान्यता दिने** : नेपाल सरकारले समितिको परामर्श लिई नेपाल राजपत्रमा सूचना प्रकाशन गरी बीउ बिजन परिक्षण वा प्रमाणीकरण गर्ने ✚वा जात परीक्षण गर्ने कुनै स्वदेशी वा विदेशी वा अन्तर्राष्ट्रिय संस्थालाई यस ऐनको प्रयोजनका लागि मान्यता प्रदान गर्न सक्नेछ ।

✚१८क. **स्वामित्व कायम रहने** : नेपालमा परम्परादेखि नै प्रयोग गरिंदै आएको स्थानीय जातको बालीको बीउ बिजनमा तोकिए बमोजिम स्वामित्व कायम रहनेछ ।

⌘१९. **दण्ड सजाय** :

१९.१ कसैले दफा ९ बमोजिम अनुमतिपत्र नलिई प्रयोगशाला सञ्चालन गरेमा पचास हजार रूपैयाँ जरिवाना हुनेछ ।

१९.२ कसैले दफा ११क. र ११ख. विपरीत बीउ बिजन बिक्री वितरण गरे वा गराएमा दस हजार रूपैयाँदेखि बीस हजार रूपैयाँसम्म जरिवाना हुनेछ ।

१९.३ कसैले दफा १३ बमोजिमको विवरण नखुलाई बीउ बिजन बिक्री वितरण गरे वा गराएमा दश हजार रूपैयाँदेखि पन्ध्र हजार रूपैयाँसम्म जरिवाना हुनेछ ।

१९.४ कसैले उपदफा १६.३ विपरीत कुनै कार्य गरेमा पच्चीस हजार रूपैयाँ जरिवाना हुनेछ ।

---

⌘ बीउ बिजन (पहिलो संशोधन) ऐन, २०६४ द्वारा संशोधित ।

✚ बीउ बिजन (पहिलो संशोधन) ऐन, २०६४ द्वारा थप ।

१९.५ उपदफा १९.१, १९.२, १९.३ र १९.४ मा लेखिएदेखि बाहेक यो ऐन वा यस ऐन अन्तर्गत बनेको नियम विपरीत कुनै काम गर्ने गराउने व्यक्ति वा संस्थालाई दशहजार रूपैयाँदेखि बीस हजार रूपैंयाँसम्म जरिवाना हुनेछ ।

२०. **सरकार वादी हुने** : यो ऐन अन्तर्गतको मुद्दा नेपाल सरकार वादी हुनेछ ।

२१. **मुद्दाको तहकिकात र दायरी** :

२१.१ यस ऐन बमोजिम सजाय हुने कसूर सम्बन्धी मुद्दाको तहकिकात ⌘बीउ बिजन नमुना सङ्कलकले गर्नेछ र त्यस्तो तहकिकातको काम पूरा भएपछि मुद्दा हेर्ने अधिकारी समक्ष मुद्दा दायर गर्नेछ ।

२१.२ उपदफा १२.१ बमोजिम मुद्दा तहकिकात र दायर गर्दा ⌘बीउ बिजन नमुना सङ्कलकले सरकारी वकीलको राय लिन सक्नेछ । मुद्दा दायर भईसकेपछि मुद्दाको बहस पैरवी र पुनरावेदन सरकारी वकीलबाट हुनेछ ।

२२. **मुद्दा हेर्ने अधिकार** :

२२.१ यो ऐन अन्तर्गतको मुद्दा हेर्ने अधिकार तोकिए बमोजिमको अधिकारीलाई हुनेछ ।

२२.२ उपदफा २२.१ बमोजिम मुद्दाको कारवाही र किनारा गर्दा तोकिएको अधिकारीले विशेष अदालत ऐन, २०५९ बमोजिमको कार्यविधि अपनाउनेछ ।

२३. **असल नियतले गरेको कामको बचाउ** : ⌘बाली निरीक्षक वा बीउ बिजन नमूना सङ्कलक वा बीउ बिजन विश्लेषक वा यस ऐन अन्तर्गत काम गर्ने अधिकार प्राप्त कुनै कर्मचारीले यस ऐन बमोजिम आफ्नो कर्तव्यको पालन गर्दा असल नियतले गरेको काम कारवाहीमा निज व्यक्तिगत रूपमा जवाफदेही हुनेछैन ।

तर कसैलाई अनावश्यक दुःख, हैरानी वा झण्झट दिने नियतले काम गरेमा सम्बन्धित व्यक्ति त्यसको लागि जवाफदेही हुनेछ ।

२४. **नियम बनाउने अधिकार** : यस ऐनको उद्देश्य कार्यान्वयन गर्नका लागि नेपाल सरकारले आवश्यक नियमहरू बनाउन सक्नेछ ।

---

⌘ बीउ बिजन (पहिलो संशोधन) ऐन, २०६४ द्वारा संशोधित ।

**द्रष्टव्य** :

१. विशेष अदालत ऐन, २०५९ द्वारा रूपान्तर भएका शब्दहरू :

"विशेष अदालत ऐन, २०३१" को सट्टा " विशेष अदालत ऐन, २०५९" ।

२. केही नेपाल कानून संशोधन गर्ने ऐन, २०६३ बमोजिम रूपान्तर भएका शब्दहरू:-

"श्री ५ को सरकार" भन्ने शब्दको सट्टा "नेपाल सरकार" ।

२. गणतन्त्र सुदृढीकरण तथा केही नेपाल कानून संशोधन गर्ने ऐन, २०६६ द्वारा "श्री ५ को प्रशस्ति" र "अधिराज्य" भन्ने शब्दहरू झिकिएका छन् ।